प्रकाशक :–

महेश कुमार श्रेष्ठ

| | | |
|---|---|---|
| कृति | ★ | सत्तालिप्सा |
| लेखक | ★ | रमेश प्रभात |
| सर्वाधिकार | ★ | लेखकमा सुरक्षित |
| प्रकाशन मिति | ★ | घटस्थापना, २०५४ |
| पहिलो पटक | ★ | ५०१ प्रति |
| आवरण | ★ | एस्० एम्० रासकल |
| सहयोग | ★ | रु. ७।- |
| मुद्रक | ★ | चौतारी छापाखाना<br>नारायणगढ<br>फोन नं.-२२९२१ |

SATTALIPSA (HAIKOOS)

by

*Ramesh Prabhat*

# केही भन्न खोज्दा

कवितामा शब्द मितव्ययिताको महत्व ठूलो छ। थोरै शब्दमा वस्तुचित्राङ्कन गरी गहिरो भाव वा विचार प्रस्तुत गर्ने उद्देश्य बोकेर कविता क्षेत्रमा "हाइकू" परम्परा प्रविष्ट भएको जस्तो लाग्छ। नित्य नवीन विषय, आधुनिक बोलीचालीका शब्द तथा शब्दमा मितव्ययिता "हाइकू" रचना पद्धतिका आधार हुन्। जापानी कविता परम्परामा प्रादुर्भूत "हाइकू" पद्धतिले वर्तमानमा अन्य देशहरूमा पनि प्रभाव जमाउन सकेको छ।

हाइकूको उद्भव सत्रौं शताब्दीमा भएको मानिन्छ। जापानमा निश्चित नियमभित्र रहेर कवि मण्डली मिली 'हाइकाइ' लेख्ने परम्परा थियो। यस क्रममा एउटा कविले ५-७-५ अक्षरको तीन

हरफे कविता (होक्कु) लेखिदिने र अर्कोले ७-७ अक्षरका दुई हरफ जोड्ने गरेर 'हाइकाइ' तयार गरिन्थ्यो। पछि गएर ५ ७-५ अक्षरीय संरचनाको स्वयंमा पूर्ण एवं स्वतन्त्र त्रिपदी कविताका रूपमा प्रस्तुत हुन थालेपछि त्यसले 'हाइकू' को संज्ञा पाउन थालेको देखिन्छ (सुवेदी, अभि: जापानी हाइकू हिजो र आज, पृ.ङ.)।

हाइकू परम्पराका पहिला कविका रूपमा बाशो (१६४४-६४) को नाम उल्लेख्य छ। उनीपछिका प्रतिभाशाली कविहरूमा बुशोन, ओनित्सुरा, इस्सा आदि देखा पर्दछन्। पुरातन ढाँचाको विरोध गरी 'हाइकू' लाई नयाँरूप दिने कविप्रतिभा शिकि (१८६७-१९१२) अर्का महत्वपूर्ण व्यक्तित्व हुन्। यसपछि थुप्रै कविप्रतिभाहरू 'हाइकू' को रचनामा लागिपरेर यो फाँटलाई उर्वर बनाएका छन्। हाइकू परम्परालाई गतिमान् बनाउँदै लैजाने क्रममा हेकिगदो, क्योशि, शुओशि, शुसोन जस्ता कविप्रतिभा स्मरणीय छन्।



त्रिपदी 'हाइकू' निस्सन्देह जापानकै देन हो। तापनि पूर्वीय वाङ्मय परम्परामा पनि त्रिपदी ढाँचाको कविता रचना भएको पाइन्छ। संस्कृत वैदिक वाङमयमा वेदका त्रिपदी ऋचाहरू छन्। यसै गरी नेपाली गीत परम्परामा पनि तीन चरणका गीत यदाकदा प्रयुक्त हुने गरेको देखिन्छ। यी रचनाहरूको तीनहरफे संरचना भए तापनि जापानी शैलीका 'हाइकू' कवितामा पाइने सूत्रात्मकता, गुणवत्ता को आफ्नै छुट्टै वैशिष्ट्य छ।

आफ्नो अनुभूतिलाई सूक्ष्मरूपमा प्रस्तुत गर्नु र अनन्त संभावनाहरूको शून्यता सृजित गरी पाठकहरूलाई चिन्तनशील बनाइदिनु 'हाइकू' को विशेषता हो। चित्रात्मकता, सूक्ष्मता र सौन्दर्यको समन्वयमा त्रिपदी हाइकूहरूको रचना हुने भएकाले यसको मौलिक विशेषता, महत्व र अर्थवत्ता छ।

विश्वकै कविता जगत्मा छुट्टै अस्तित्व कायम गर्न सफल 'हाइकू' परम्पराबाट नेपाली कविहरू पनि असंपृक्त रहन सकेनन्। फलतः नेपालमा पनि हाइकूहरू लेखिन थाल्यो। नेपालमा हाइकूको प्रचलन तीन चार दशकयता भइरहेको पाइएको छ। तापनि नेपाली-कविता भूमिमा 'हाइकू' को उत्पादन अझै पातलै रहेको छ। 'हाइकू' परम्परा र सिद्धान्तको मर्म नबुझी हाइकू लेख्नु रहमा ढुङ्गो फाल्नु जस्तै भएकाले र यस सम्बन्धी चर्चापरिचर्चा अपेक्षाकृत कम हुनाले पनि 'हाइकू' रचनाले त्यक्ति व्यापकता पाउन नसकेको हो। तापनि अचेल 'हाइकू' प्रेम काव्य साधकहरूमा विस्तारै बढ्न थालेको आभास पाइएको छ।

वर्तमान नेपाली कविता जगत्मा साहसपूर्वक हाइकू शैलीका कविताहरूको सङ्ग्रह



"सत्तालिप्सा" लिएर नवोदित प्रतिभा रमेश प्रभात प्रस्तुत हुनुभएको छ। कवि रमेश प्रभात आशालाग्दा साहित्यिक व्यक्तित्वका रूपमा देखापर्नुभएको छ। साप्ताहिक पत्रिका, हवाई मासिक पत्रिका तथा स्थानीय साहित्यिक पत्रिकाहरूमार्फत् छोटा मीठा गद्यकविता र हाइकूहरू प्रस्तुत गर्ने रमेश प्रभातको कवित्व चेतना रहरलाग्दो ढङ्गमा विकसित भइरहेको छ। पत्रकारिता र साहित्यलाई सँगै हिंडाउन प्रयासरत कवि प्रभातको अभिव्यक्तिमा अनुभूतिको तीव्रता र सशक्तता पाइन्छ। उहाँको कविताशैली सरल र सुन्दर छ। हाइकूको मर्म भेट्टाउन कविले गरेको प्रयास प्रशंसालायक छ। कवितालाई कलात्मक रूप दिंदै कविले नेपाली जनजीवनको चित्र खिचेर वर्तमानमा देखिएका सामाजिक-राजनीतिक विकृति-विसंगतिप्रति तीक्ष्ण व्यङ्ग्य कस्नुभएको छ र मानवतावादी समाजको आग्रह अघिसार्नु भएको छ।

जम्मा बयालीस ओटा त्रिपदी कविता (हाइकू)हरू समाविष्ट भएको यस संग्रहमा सबैजसो हाइकूहरूलाई शीर्षकमा बाँधिएको छ। सम्पूर्ण कविता 'हाइकू' परम्परालाई आत्मसात् गरी ५-७-५ अक्षरीय संरचनामा आबद्ध गरिएको छ। यस कृतिका हाइकूहरू जति सरल छन्, त्यत्तिकै भावको गहिराइ पनि छ। एकछिन घोरिएर सोच्ने वा मनन गर्ने हो भने प्रत्येक 'हाइकू'हरू हृदयको संवेदनालाई स्पर्श गर्न सक्षम छन्। यसमा संगृहित हाइकूहरू कुनै सियोको डोबले झैं चस्का दिने र कुनै विद्युत-धारले झैं झिल्कादिने खालका छन्। कवि प्रभात-का हाइकूहरू जब हाम्रा अनुभूतिसंग स्पर्श गर्न आइपुग्छन् अनि मस्तिष्कलाई सचेत तुल्याउँछन्।

निरन्तर राष्ट्रचिन्तन गर्ने, सदैव आफूलाई भाषा साहित्य सेवामा समर्पित गर्न चाहने कवि लेखकहरू वर्तमानमा कसरी बाँचेका छन् त? कविले यसको मर्म र रहस्यलाई यसरी उद्घाटित गर्नुभएको छ।



आस्था पिएर
जीवन गुजार्दै छ
निरीह कवि!

(कवि)

लेखक कवि प्रतिभालाई जीवनभर चिन्न नसक्ने (नचाहने?) र मृत्युपश्चात् सम्मान गर्ने परिपाटिप्रति लक्षित कविको अर्को हाइकू यस्तो छ –

जीवनभर
उपेक्षित रह्यो ऊ
मर्दा सम्मान?

(लेखक)

वर्तमान नेपालमा प्रजातन्त्रको पुनस्थापन त भएको छ तर प्रजातन्त्रको अर्थ, महत्व नबुझ्नेकाहरू (वा बुझ पचाउनेहरू)कै हालीमुहालीमा यसको गलत प्रयोग भएको र मुलुकको ह्रासोन्मुख स्थितिको चित्र 'प्रजातन्त्र' शीर्षकको हाइकूमा पाइन्छ–

भोको नेताको
माग्री खाने बहाना
यो प्रजातन्त्र ।

यसैगरी स्वतन्त्रता, चुनाव, सत्तालिप्सा, कर्तव्य, नेता, बजेट, सरकार, राजनीति, नेपाली जनता शीर्षकका हाइकूहरूले मुलुकको वर्तमान विसंगत अवस्थाको चित्रण गर्दै, नैतिकताको ह्रास, गरीवी, छाडापन जस्ता कुराले नेपाल उन्नतितिर लाग्न नसकेको संकेत गर्दछन् ।

जीवनको यथार्थ भोगाइबाट अनुभूत कवि प्रभातका भावनाहरू सुन्दर सरल शैलीमा अभिव्यक्त भएर गहिरो भाव संप्रषण गर्न सक्षम छन् ।

अन्तमा, कवि रमेश प्रभातबाट यस्तै अझ राम्रा, स्तरीय काव्य-पुष्पहरू नेपाली साहित्यवागमा मुस्कुराऊन् भन्ने शुभेच्छा दिन्छु ।

२०५४/५/२५ —गोविन्दराज विनोदी



# आफ्नै गन्थन

★ हाइकू के हो ? यो कहाँबाट आयो ? यो किन लेखिन्छ ? आदि कुराहरू बताउनु मेरो कर्तव्य होइन । मेरो काम त लेख्नु हो । के लेख्छु र कस्तो लेख्छु मूल्याङ्‌न गर्ने जिम्मा हो—आदरणीय पाठकहरूको !

★ यति म स्वीकार्छु कि थोरैमा धेरै भन्नु पर्दा म कविता लेख्न छोडेर हाइकू लेख्न बस्छु । मेरो कलमलाई लेख्न बारबार झकझक्याउने चीजहरू त समाजका विसंगतिहरू नै हुन् ।

★ यस संग्रहमा संग्रहित रचनाहरू मेरो चार वर्षे लेखनका उपलब्धि हुन् । मेरा डायरीका पानाहरूमा थन्किएर बसेका र केही विभिन्न

पत्रिकाहरूमा छरिएर रहेका रचनाहरूलाई एकमुष्ठ गरी संग्रहका रूपमा छपाउने जिम्मेवारी वहन गर्ने भाइ महेशप्रति म आभार प्रकट गर्दछु ।

★ मलाई हरबखत लेख्ने समय उपलब्ध गराइदिनुहुने पूज्नीय बुबा हर्कबहादुर श्रेष्ठ र आमा पुनिमाया श्रेष्ठप्रति सदैव म अनुगृहित हुनेछु ।

★ आफ्नो व्यस्तताका बावजूदपनि समय खर्चेर पुस्तकमा शुद्धाशुद्धि हेरिदिने र भूमिका लेखिदिनुहुने श्रद्धेय गुरु गोविन्दराज विनोदीका साथै मेरो बारेमा केही कुरा लेखिदिनुहुने गीतकार प्रेमविनोद नन्दनप्रति हृदयदेखि नै आभार प्रकट गर्दछु ।



★ आवरण तयार गरिदिएर ठूलो गुन लगाउने रंगकर्मी मित्र एस्. एम्. राइकलप्रति हार्दिक धन्यवाद टक्र्याउँछु । त्यस्तै संग्रह निकाल्नको लागि मलाई सधैं घचघच्याइरहने मित्र गोपाल पौडेलको गुन म कहिल्यै बिर्सन्नँ ।

★ पुस्तक प्रकाशनका लागि प्रत्यक्ष वा परोक्ष सहयोग एवं सुझाव दिनुहुने अन्य मित्रहरु लगायत पुस्तक शीघ्र प्रकाशन गर्न मलाई सहयोग पुर्‍याउने चौतारी छापाखाना परिवार प्रति पनि धन्यवाद भन्छु म ।

★ अन्तमा विजयादशमी २०५४ को हार्दिक शुभकामना सहित यो पुस्तक आदरणीय पाठकहरूमा समर्पण गर्दछु । अस्तु ।

घटस्थापना, २०५४ — रमेश प्रभात
मंगलपुर, चितवन

# हाइकू क्रम





## १. कवि

आस्था पिएर
जीवन गुजार्दछ
निरीह कवि !

## २. पत्रकार

राति अनिदो
दिउँसोभरि भोको
म-पत्रकार !

## ३. लेखक

जिन्दगी भर
उपेक्षित रह्यो ऊ
मर्दा सम्मान ?

## ४. गरीब

जौं बाट पनि
थिचिने र मिचिने
मानव यन्त्र



## ५. नेपाली जनता

जे गर्न पनि
अर्काको मुख ताक्ने
सुविधाभोगी !

## ६. राजनीति

सत्ताको लागि
जे पनि गराउने
फोहोरी खेल !

## ७. समय

पुरानो धोती
बाजेले छाडेपछि
नातिको सुट !

## ८. सामल

साँझको बास
भोका बटुवाहरू
थोरै सामल !



## ९. जिजीविषा

पुसको झरी
एउटा बूढो रोगी
र जिजीविषा !

## १०. प्रेमको मोल

जीवनभरि
नछुट्टिने कसम
प्रेमको मोल !

## ११. सच्चा नेता

लोलोपोतोमा
जनता भुलाउने
ऊ सच्चा नेता !

## १२. सापटी हाँसो

सापटी हाँसो
हाँस्नु परिरहेछ
जिन्दगी भर !



## १३. सगरमाथा

आफ्नै छातीमा
क्याक्टस उमार्दैछ
सगरमाथा !

## १४. जिन्दगी

हरेक दिन
म मलामी जाँदैछु
आफ्नै लासको !

## १५. सरकार

आशा देखाई
सत्तामा पुगेपछि
के नै गऱ्यो र ?

## १६. बजेट

चारा थोरै छ
खाने मुख धेरै छन्
भागै पुग्दैन ।



## १७. जीवन

साउने भेल
तर्न सके सफल
नत्र विफल !

## १८. प्रेमका कुरा

बिन्ती छ मेरो
नगरिदेऊ अब
प्रेमका कुरा !

## १९. प्रजातन्त्र

भोको नेताको
मागी खाने बहाना
यो प्रजातन्त्र !

## २०. नेता

म एक नेता
खुलामञ्चको पेटी
मेरो संसार !



## २१. कर्तब्य

यो निर्वाचन
नोटमा भोट साट्नु
मेरो कर्तब्य !

## २२. मेरो जीवन

नासो होइन
बन्धकी परेको छ
मेरो जीवन !

## २३. खपत

खडेरी पर्दा
सांचिएको अन्नले
पेट भर्दैछु !

## २४. मान्छे

घांस छाडेर
अन्न खान थालेको
उन्नत जन्तु !



## २५. स्वतन्त्रता

बाँदरलाई
नरिवल दिएको
गुडायो उस्ले !

## २६. जागीर

पेट भरियो
तैपनि खाँदैछु म
घाँटी नापेर !

## २७. सुख

नदीको भेल
बगिरहेछ आज
मेरो लागि ऊ !

## २८ शहर

उत्साह बोकी
शहर पस्नेहरू
रोइरहेछन् !



## २९. चुनाव

कुकुरहरू
एक टुक्रा हड्डीमा
लडिरहेका !

## ३०. यस्तै छ

चरा नमर्ने
प्लास्टिकको गोली भो'
प्रमाण पत्र !

## ३१. आगत

मेघ गर्जिन्छ
सानी बालिका रून्छे
धिमा स्वर !

## ३२. प्रकृति

मान्छे देखेर
झुकिरहेछ किन ?
इन्द्रधनुष !



## ३३. संगति

बूढो मान्छेले
बांसुरी फुकिरह्यो
नदी तटमा ।

## ३४. सभ्यता

वैभवतामा
ऊ एक्लै रमाउँछ
धूँवा फैलेझैं ।

## ३५. नियति

निर्जन रात
एकलास जंगल
रूखको फेद ।

## ३६. धोखा

खेलवाड भो'
एउटा दीर्घ रोगी
र मृत्यु बीच ।



## ३७. भोगाइ

खोला बगेझैं
ऊ बग्यो-शून्यतामा
जिन्दगी भर ।

## ३८. क्लिष्टता

बाँचे झैं गरी
मर्नेहरूको व्यथा
को बुझ्न सक्छ ?

## ३९. समाज

भाइ भाइमा
हानाहान भयो रे
बाँचनको लागि ।

## ४०. संचय

अभाव बोकी
जिन्दगी कटाउँछु
छोराको लागि ।



## ४१. कर्जा

दशैंको वेला
मौलोमा पसिएको
वलीको वोका ।

## ४२. सत्तालिप्सा

ढाँटेरै पनि
कुर्सी जोगाउँदैछ
सत्तालिप्साले ।

# हार्दिक आभार

| पत्रिका | शीर्षक |
|---|---|
| साप्ताहिक नारायणी | कवि |
| ,, ,, | पत्रकार |
| नव माध्यम | गरीब |
| ,, ,, | नेपाली जनता |
| वागीश्वरी | राजनीति |
| साप्ताहिक नारायणी | नेता |
| ,, ,, | कर्तव्य |
| वागीश्वरी | चुनाव |



# रमेश प्रभात


ठेगाना :मंगलपुर-१, चितवन

जन्म मितिः २०२९/३/६

सम्प्रति :शिक्षण, पत्रकारिता


## प्रकाशित कृतिहरु

१) प्रायश्चित ( वातावरणीय वाल कमिक्स )

२) विभिन्न पत्र – पत्रिकामा कविता, गीत, गजल, मुक्तक, हाइकू, लघुकथा प्रकाशित

---

सूत्रात्मक अभिव्यक्तिलाई कवितात्मक हाईकू शैलीमा शब्दाङ्कन गरिएको यो संगालो "सत्तालिप्सा" काव्य चटनीको आस्वाद दिन सक्षम छ । समसामयिक परिवेशको वृत्तमा गुम्फित भएर पनि भावी काव्य क्षितिजतिर उन्मुख कवि रमेश प्रभातलाई साधुवाद ।

–प्रेम विनोद नन्दन